श्रीमते रामानुजाय नमः                                                                                      श्रीमते नारायणाय नमः



# भगवत्प्राण-प्रतिष्ठा (महासम्प्रोक्षण) समारोह २०७५

मिति( २०७५ चैत्र १३ देखि १७ गतेसम्म (दिनाङ्क 27 देखि 31 मार्च 2019 सम्म)

## सादर अनुरोध

समादरणीय भक्तवृन्द,

अखिलकोटिब्रह्माण्डनायक प्रभु श्रीलक्ष्मीनारायणका कृपाले श्रीमत्परमहंस परिव्राजकाचार्य श्रीमद्वेदमार्ग-प्रतिष्ठापनाचार्य उभयवेदान्तप्रवर्तकाचार्य श्री श्री श्री त्रिदण्डी चिन्न श्रीमन्नारायण रामानुज जीयर स्वामीजी महाराजको मंगलाशासनद्वारा दाक्षिणात्य शैलीमा नवनिर्मित श्रीलक्ष्मीनारायण मन्दिरमा यही चैत्र १३ गतेदेखि १७ गतेसम्म भगवत्प्राणप्रतिष्ठा (महासम्प्रोक्षण) सम्पन्न हुने सहर्ष जानकारी गराउदछौं । उक्त पावन अवसरमा श्रद्धेय श्रीजीयर स्वामीजी महाराजको सत्सान्निध्यमा विशिष्ट सन्त महापुरुषहरुको दर्शन र आशीर्वचनको सु-अवसर प्राप्त हुने भएकोले इष्ट-मित्र, बन्धुबान्धवसहित स-परिवार पाल्नु भई तन, मन र धनले सहयोग गरी धन्य बन्नु हुन सादर अनुरोध गर्दछौं ।

### सेवा/सहयोग

१. एकदिनको राजभोग (महाप्रसाद) सेवा रु ६१,००० ।-
२. एकदिनको बालभोग सेवा रु ३१,००० ।-
३. मुख्य यजमान (कर्ता) बन्नको लागि रु ५,००,००० ।-
४. विशिष्ट यजमान (कर्ता) बन्नको लागि रु. ५१०००।-
५. यजमान (कर्ता) बन्नको लागि रु ११,००० ।-
६. लक्ष्मीपूजन रु १,१००समूहमा मन्दिर परिसरमा स्वामीजी महाराजबाट सम्पन्न गराईने ।
७. यज्ञकोलागि घ्यू, तिल, समिधा, फल, फूल, माला आदि सहयोग ।
८. भोजनका लागि चामल, दाल, सागसब्जी घ्यू, तेल, आदि सहयोग ।

### कार्यक्रम तालिका:

१. २०७५ चैत्र १३ गते बुधवार-
   १) बालकुम्भ आराधना, अरणिमन्थन, अग्निप्रतिष्ठा, मूर्तिकुम्भ स्थापन ।, २) औपचारिक समुद्घाटन दिउसो १:००
२. चैत्र १४ गते विहीवार :
   १) ६:०० बजेदेखि १२:०० सम्म छायाधिवास, २) दिउसो १:०० बजेदेखि विशिष्ट प्रवचन, ३) सायं जलाधिवास ।
३. चैत्र १५ गते शुक्रवार: १) लाजाधिवास, तत्वन्यासहोम, शैय्याधिवास, २) दिउसो १:०० बजेदेखि प्रवचन ।
४. चैत्र १६ गते शनिवार: १) स्नपन, रत्नन्यास, विश्वयन्त्र-स्थापन आदि । २) दिउसो १:०० बजेदेखि श्रद्धेय श्रीजीयर स्वामी महाराजको नागरिक अभिनन्दन मन्दिर परिसरमा सम्पन्न हुनेछ ।
५. चैत्र १७ गते आइतवार: १) महापूर्णाहुति, सम्प्रोक्षण, २) सामूहिक उपनयन (व्रतबन्ध)

विशेष :- क) प्रतिदिन श्रीरामचरितमानसको सङ्गीतमय पारायण हुनेछ । समय : ९:३० बजेदेखि १२:३० बजेसम्म
ख) चैत्र १८ गते र १९ गते विहानसम्म श्रद्धेय श्रीजीयर स्वामीजी महाराज मन्दिरमै विराजमान होइबक्सने छ ।
ग) सम्पूर्ण कार्यक्रमहरु मन्दिर परिसर, पिपल चौकमा सम्पन्न हुनेछन् ।

जय श्रीमन्नारायण !!

भगवत्प्राण-प्रतिष्ठा (महासम्प्रोक्षण) समारोह मूल समिति

स्थान- श्रीलक्ष्मीनारायण मन्दिर, पिपल चौक, विराटनगर ४

सम्पर्क: ०२१४६१९८९, ९८४२१३५९९०, ९८४२३०९२१६, ९८४२०४९८५८

श्रीमते रामानुजाय नमः  श्रीमते नारायणाय नमः

# भगवत्प्राण-प्रतिष्ठा (महासम्प्रोक्षण) समारोह २०७५

मिति : २०७५ चैत्र १३ देखि १७ गतेसम्म
(दिनांक : मार्च 27 देखि 31 सम्म)

स्थान :
श्री लक्ष्मीनारायण मन्दिर, पिपल चौक, विराटनगर-४







श्री श्री श्री जीयर स्वामीजी

भगवत्प्राण-प्रतिष्ठा (महासम्प्रोक्षण)
समारोह मूल समिति २०७५
विराटनगर-४

फहराउन सक्षम, वीतराग सन्त, जगदाचार्य श्रीभाष्यकार रामानुजाचार्यको अपरावतार ज्ञानानुष्ठान सम्पन्न, युगपुरुष श्रीमत्परमहंस परिव्राजकाचार्य श्रीमद्वेदमार्ग-प्रतिष्ठापनाचार्य उभयवेदान्त-प्रवर्तकाचार्य श्री श्री श्री त्रिदण्डी चिन्न श्रीमन्नारायण रामानुज जीयर स्वामीजी महराजको जगत्‌उद्धारका लागि भएको विशेष योगदानको उच्च मूल्यांकन गर्दै विराटनगर महानगरपालिकाले मिति २०७५ चैत्र १६ गते शनिबारका दिन उहाँको नागरिक अभिनन्दन गर्नेछ, साथै नगेन्द्रप्रसाद आशालता रिजाल प्रतिष्ठानद्वारा नगेन्द्रप्रसाद रिजाल धार्मिक सांस्कृति पुरस्कारद्वारा श्रीस्वामीजीको विशेष सम्मान गर्ने कार्यक्रम पनि रहेको छ।

## सादर अनुरोध

भगवत्कृपाले हामीलाई यस्तो महान समारोहमा सहभागी हुने सु-अवसर मिलेको छ। सन्तशिरोमणि श्रीजीयर स्वामीजीको दर्शन, प्रवचन तथा विशिष्ट सन्तहरूको समेत दर्शन र आशीर्वचनको अवसर प्राप्त भएको छ।

अखिलकोटिब्रह्माण्डाधिपति सर्वेश्वर भगवानको प्राणप्रतिष्ठा महोत्सवको दर्शन, यस क्षेत्रमा रहेको अभूतपूर्व भव्य सुन्दर मन्दिरको दर्शन समेतको सौभाग्य मिलेको हुँदा आ-आफ्ना सामर्थ्य अनुसार तन, मन, धन, विवेक आदिले सहयोग पुऱ्याउनु हुन सादर अनुरोध गर्दै उक्त अवसरमा इष्ट-मित्र, बन्धुबान्धवसहित स-परिवार पाल्नुहुन सादर अनुरोध गर्दछौं।

कार्यक्रमललाई सुव्यस्थित रूपमा सम्पन्न गर्न भगवत्प्राणप्रतिष्ठा (महासम्प्रोक्षण) समारोह समिति २०७५ को गठन भएको छ।

# भगवत्प्राणप्रतिष्ठा (महासम्प्रोक्षण) समारोह

## कार्य सम्पादन समिति

| | | |
|---|---|---|
| अध्यक्ष | : | श्री सुरेश कुमार शर्मा |
| सह-अध्यक्ष | : | श्रीमती इन्दिरा रिजाल |
| सह-अध्यक्ष | : | श्री राजेन्द्र राउत |
| सह-अध्यक्ष | : | श्री शंकरलाल अग्रवाल |
| सचिव | : | श्री युवराज धिताल |
| सह-सचिव | : | श्री ऋषिराम अधिकारी |
| कोषाध्यक्ष | : | श्री श्रवण अग्रवाल |
| सदस्य | : | श्री दधिराज सुवेदी |
| सदस्य | : | श्रीमती डा. मीनाक्षी नेपाल |
| सदस्य | : | श्री कविराज न्यौपाने |
| सदस्य | : | श्री बाबुराजा ओभ्का |
| सदस्य | : | श्री नन्दकिशोर राठी |
| सदस्य | : | श्री नारायण मुन्दडा |
| सदस्य | : | श्री देवेन्द्र गुप्ता |
| सदस्य | : | श्री पारस लुनिया |

## श्री लक्ष्मीनारायण मन्दिर

जीयर शैक्षिक समिति
पिपलचौक, कञ्चनवारी, विराटनगर-४,

सम्पर्क :
०२१-४६१९८९, ९८४२१३५५५७, ९८४२०३०५२१६,
९८४२०४९८५८, ९८५२०५०५५०, ९८५१०५०४२९

### प्रिय भगवद् बन्धुहरू,

शास्त्रले भगवानका ५ स्वरूपहरूलाई निरुपण गर्दछन् : १. पर २. व्यूह ३. विभव ४. अन्तर्यामी र ५. अर्चा । शेष, गरूड, विष्वक्सेन आदि नित्यपार्षदहरूद्वारा सेव्य भएर श्री-भू-नीला महिषीहरूका साथमा नित्यविभूति (श्रीवैकुण्ठ)मा विराजित स्वरूप पर-स्वरुप हो । जगतको सृष्टि-स्थिति संहार हेतु वासुदेव, संकर्षण, प्रद्युम्न र अनिरुद्ध रूपमा रहने स्वरूपलाई व्यूह स्वरूप भनिन्छ। धर्मसंस्थापनार्थ राम, कृष्ण आदि रूपमा जगतमा अवतीर्ण स्वरूप विभव स्वरूप हो । तत्सृष्ट्वा तदेवानुप्राविशत् यस श्रुतिवाक्यानुसार चेत (जीव) र जड (प्रकृति)का भित्र रहेर भगवानले जगतलाई अन्तर्यामीरूपले धारण गर्नुहुन्छ । साधकका निमित्त अत्यन्त सुलभ भएर मूर्तिमा विराजित स्वरूपलाई अर्चा स्वरूप भनिन्छ।

भगवानका अन्य ४ स्वरूपभन्दा अर्चास्वरूप भक्ति-प्रपत्ति मार्गका अनुयायीहरूका लागि अत्यन्त उपादेय हुन्छ। आकार, प्रमाण, लक्षण र विधिको संयोजनद्वारा मूर्तिमा ईश्वरत्वको आधान गरिने हुँदा ऋषिहरूले अर्चास्वरुपमा पूर्णत्वको अनुभव गर्नु भएको छ। नारदपाञ्चरात्र आदि आगमशास्त्रहरूले अर्चामा गरिने आराधनाको क्रम, विधि र फललाई सुन्दर रूपले निरूपण गरेका छन् । पाञ्चरात्रस्य कृत्स्नस्य वक्ता नारायणः स्वयम् आदि प्रमाणले भगवान नारायण नै पाञ्चरात्र आगमनका प्रवर्तक हुनहुन्छ भन्ने सिद्ध हुन्छ। अतः प्रायः अर्चा (मूर्ति)को प्राण-प्रतिष्ठा तथा आराधना पाञ्चरात्र विधानले नै भएको पाइन्छ।

## श्री लक्ष्मीनारायण मन्दिर

हाल विराटनगर महानगरपालिका-४, पिपलचौकमा अवस्थित श्री लक्ष्मीनारायण मन्दिरको प्रारम्भ २०३९ सालमा भएको हो। तत्कालमा दक्षिण भारतको आन्ध्रप्रदेश अन्तर्गत विजयवाडा, सीतानगरमा रहनुहने वीतराग सन्त, श्रीमत्परमहंस परिव्राजक त्रिदण्डी चिन्न श्रीमन्नारायण रामानुज जीयर स्वामीजीको आज्ञा एवं मंगलाशासनद्वारा वैकुण्ठवासी मेदिनीराज (मधुसुदन) सुवेदीको मुख्य अग्रसरता र स्वामी श्रीपद्मधराचार्यज्यूको मार्गनिर्देशनमा मन्दिर निमार्णको भूमिका तयार भएको थियो। भूतपूर्व प्रधानमन्त्री स्व. नगेन्द्रप्रसाद रिजालज्यूको करकमलबाट शिलान्यास सम्पन्न भएर विराटनगर भित्र र बाहिरका तमाम भक्तहरूको सक्रियतामा मन्दिरको निर्माण कार्य सम्पन्न भई २०४३ फाल्गुण महिनामा श्रद्धेय श्रीजीयर स्वामीजी महाराजको प्रमुख आचार्यत्वमा प्राण-प्रतिष्ठा सम्पन्न भयो। भगवानको विधिवत् पूजन तथा आवश्यकीय भवनहरूको निर्माण हुने क्रमसँगै २०४९ सालबाट श्री लक्ष्मीनारायण संस्कृत गुरूकुलको सञ्चालन, अतिथिसेवा, धार्मिक जागरण सत्संग, धार्मिक अनुष्ठान, गौशाला आदि सेवाहरूको सञ्चालन हुन थाल्यो।

मन्दिरको मूल भवनको जीर्णतालाई मध्यनजर गरेर २०६७ सालमा तत्कालीन मन्दिर समितिको प्रार्थना अनुसार श्री जीयर स्वामीजीको आज्ञाले पुरानो जीर्ण भवन हटाई व्यवस्थित बलियो मन्दिर तैयार गर्ने निर्णय भयो । २०६७ माघ महिनामा भगवानलाई शास्त्रीय विधिद्वारा बालालयमा राखेर निर्माण कार्य प्रारम्भ गरियो । धेरै महामना भक्तहरूको उच्च सहयोगले करिव ६ करोडको लागतमा दक्षिणभारतीय कला सम्पन्न भव्य सुन्दर मन्दिरको निर्माण कार्य सम्पन्न भएको छ। नेपालकै गौरवका रूपमा निर्मित यस मन्दिरले विराटनगरको गहनाको रूपमा आफूलाई स्थापित गरेको छ।

## सञ्चालित सेवाहरू:

क) श्रीलक्ष्मीनारायण संस्कृत गुरुकुलम्

सम्बन्धित निकायबाट स्वीकृति लिई करिब ५० छात्रहरूलाई निशुल्क आवास, भोजन सहित आधुनिक तथा वैदिक शिक्षा प्रदान हुदै आएको छ।

ख) वृद्ध सेवा

असहाय वृद्धवृद्धाहरूको निःशुल्क आवास तथा भोजन सेवा सञ्चालित रहेको छ।

ग) अतिथि सेवा

आगन्तुक अतिथिहरूलाई निःशुल्क भोजन तथा आवास सेवा प्रदान गरिँदै आएको छ।

घ) गौ सेवा

केही गाईहरू राखेर गौ सेवाको कार्यहरू हुदै आएको छ।

ङ) धार्मिक जागरण

भगवानको नित्यसेवा, वेदध्वनि, सत्संग, उत्सव आदिको सञ्चालनद्वारा सनातन धर्मको जागरण र संरक्षणमा सहयोग रहदै आएको छ।

## भगवत्प्राण-प्रतिष्ठा

श्रीजीयर स्वामीजीको मंगलाशासनद्वारा नवनिर्मित सुन्दर भव्य मन्दिरमा यही चैत्र १३ गतेदेखि १७ गतेसम्म पञ्चदिवसीय भगवत्प्राणप्रतिष्ठा (महासम्प्रोक्षण) सम्पन्न हुनेछ। पहिले प्रतिष्ठा भइसकेका श्रीविग्रहहरूको सम्प्रोक्षण तथा थप नयाँ विग्रहहरूको प्राणप्रतिष्ठा गरिने छ । उक्त पावन अवसरमा श्रीजीयर स्वामीजी महाराजको सत्सान्निध्यमा देश-विदेशका सन्त, महन्त आचार्य एवं विद्वानहरूको सहभागिता रहनेछ । पञ्चकुण्डात्मक यज्ञको दर्शन, महापुरुषहरूको दर्शन एवं आशीर्वचन तथा प्रतिष्ठामहोत्सवको मनोरम दृश्यको लाभ प्राप्त हुनेछ।

## विशेष कार्यक्रम

वैदिक सनातन धर्मको ध्वजालाई विश्वमा

श्रीमते रामानुजाय नमः



# भगवत्प्राण-प्रतिष्ठा (महासम्प्रोक्षण) समारोह मूल समिति

## हार्दिक निमन्त्रणा

अखिलकोटिब्रह्माण्डाधिपति सर्वेश्वर भगवानको असीम अनुकम्पाले यही २०७५ साल चैत्र १३ गतेदेखि १७ गतेसम्म श्रीमत्परमहंस परिव्राजकाचार्य **श्रीमद्वेदमार्गप्रतिष्ठापनाचार्य उभयवेदान्तप्रवर्तकाचार्य श्री श्री श्री त्रिदण्डी चिन्न श्रीमन्नारायण रामानुज जीयर स्वामीजी** महाराजको प्रमुख आचार्यत्वमा सम्पन्न हुने भगवत्प्राणप्रतिष्ठा (महासम्प्रोक्षण) कार्यक्रममा यहाँको गरिमामय उपस्थितिको लागि सादर अनुरोध गर्दछौं।

युवराज धिताल
(सचिव)

श्रीलक्ष्मीनारायण मन्दिर,
पीपल चौक, विराटनगर ४, कञ्चनवारी

सुरेशकुमार शर्मा
(अध्यक्ष)